प्रकाशक
**इन्डिगो इन्क पब्लिकेशन प्रा. लि.**
अद्वैतमार्ग, काठमाडौँ
फोन : ९८५१०७८५१८
indigoinknepal@gmail.com
www.indigoinkbooks.com

विधा : काब्य

लेखक : मुरहरि रायमाझी

संयोजन : निर्भीकजंग

स्केच : अकृन अधिकारी

संस्करण : २०७९, भदौ

आवरण/लेआउट : इन्डिगो डेस्क

*'Shashan Khai Vidiko ?', A collection of Poems By Murahari Rayamajhee, 2022*

---



---

## समर्पण

ती साना-साना बाबुनानी जसले मलाई गुरु भनिदिँदा पनि आफ्नो कर्म सार्थक लाग्छ ।

भाषा सागर रत्न हो झिलिमिली छाती छचल्काउँदै
स्वर्गैलाई समाउने सुनहला सौन्दर्यका छालमा ।
यो ढुङ्गे तटमा सिपी सजल नै फ्याँक्दो छ रित्ता सब
पारावार ध्वनी प्रगूढ यसमा गुँज्छन् भने तुष्ट छु ॥

*(लक्ष्मीप्रसाद देवकोटा/शाकुन्तल महाकाव्य, १ : १८)*

# सम्झी फर्क छिटै

आफ्नै देश अहो ! भुलेर कसरी रोज्यौ नि खाडीहरू
बाँझै छन् विचरा पुगेन मलजल् ती खेत टारीहरू ।
मानेनौ पहिले नजान बिनती गर्दा नि मैले कति
त्यै बेला चुकियो पुगेन पछिको सोचाइ साँच्चै अति ॥१

तिम्रै मार्ग सधैँ कुरेर बबुरा ! ती बालबच्चा पनि
सोध्छन् हे ! जननी बुबा त कहिले फिर्छन् नि हाम्रा भनी ।
आमाबाबु समेत् कतातिर गयो हाम्रो त छोरा हरे
भन्छन् ती पिर त्यो गरेर हरदिन् आपत्ति विघ्नै परे ॥२

तिम्रै खातिर ती कुरेर रहने पाखापखेरा सबै
साथीभाइ समेत् कता छ अहिले भन्दै त सोध्छन् ल है ।
फर्की आउनुपर्छ लौ अब त हे सम्झेर नेपाल पो
फर्केनौ नहिता मया र ममता साँच्चै त बेकार भो ॥३

पर्देशी न चिठी न फोन कहिले गर्छौ न माया यहाँ

के खान्छौ कसरी कता छ विचरा ! डेरा त बस्छौ कहाँ ।
दिक्दारै घरमा भएर सबले मानी रहेछौँ पिर
सम्झी फर्क छिटै पुकार गरियो पर्देश लौ आखिर ॥४

चौतारी पनि आश गर्छ फिरने क्वेली नि तिम्रै पथ
हे प्यारा ! पतिदेव फर्क विनती गर्दैछु साँच्चै म त ।
रातैमा निद छैन, छैन दिनमा त्यो भोक तिर्खा अनि
वर्षौं भो खबरै नपाइ दिलमा लागेन घामै पनि ॥५

बित्ने भो वय यो मरे रहर ती पर्खेर बस्ने कति
सप्नामा पनि देख्नु छैन अबता मर्दैछ आशा जति ।
छैनौ वा जिवितै भएर पनि वा बिर्स्यौ कि हामीहरु
अर्धै बाँच्नु पर्‍यो सधैँ शिब कठै ! फाल्दिन्छु ज्यानै बरु ॥६

रोपेथ्यौ बिरुवा झरे नि चिचिला माया विनाले सबै
थोत्रा भै अहिले गए नि सब ती छाना र नाना ल है !
आफ्नो भूमि यहाँ खोजेर पदका तिम्रै त चिन्हैहरू
सोध्छिन् त्यो अहिले कता छ किन हो फर्केन के पो गरुँ ॥७

वैभव निम्ति सबै भुल्यौ नि पहिले भन्दा नमानीकन
ऐले  छौ कुन ठाउँमा भन न हे हाम्रो रुवाई मन् ।
यो पापी नियती रहेछ अधुरो यौवन् त ब्यर्थै गयो
तिम्रै खातिर पो बँचेछु भगवान् सास्मात्र बाँकी रह्यो ॥८

गाह्रो भो घर यो सँगाल्न अब ता हार्दैछु मैले हरे
ती सासू-ससुरा थला परिसके कस्ले त हेर्ने भरे ।
बाल्बच्चा कसरी म पाल्नु भगवान् भोगेर पीडा कति
काल् पर्खूँ कति दिन् कुरेर प्रभु हे घट्तै छ हिम्मत् जति ॥९

राम्रीका वशमा परेर न कतै बिर्स्यौ कि हामीहरू
प्यारी थेँ प्रभुकी अगाडि अति नै ठान्यौ नि वैरी बरु ।
बाँचेकी म त लौ अहोदिन सधैँ पीडा र चिन्ता लिई
साँच्चै नै नफिरे म मर्छु जहरै साथी बनाई पिई ॥१०

*(छन्द : शार्दूलविक्रीडित)*

## शासन खै विधिको ?

द्वन्द्वैले जननी भिजेर विचरी नेत्रै त धोए पनि
नेताजी कहिल्यै दुखेन मन त्यो यो देश रोएर नि ।
रातै छिन् वसुधा बगेर रगतै हान्मार गर्दा अति
आआफू लडदा सदैव नबुझ्री व्यर्थै भयो है खति ॥१

आफ्नो स्वार्थ सधैँ बन्यो किन हरे ! यो देशभन्दा ठुलो
बाँझै छन् अहिले बनेन कहिल्यै त्यो खेत भिज्ने कुलो ।
व्यर्थै छन् जलस्रोत देश भरिनै बल्दैन बत्ती जहाँ
बन्दै छिन् धरती उजाड रुख ती फाँडेर कस्ले यहाँ ॥२

के जित्छौ र तिमी तयार किन छौ मर्नै र मार्नै पनि
आफ्नै भाइ पराइ झैँ हरबखत् ठानेर व्यर्थै अनि ।
हाम्रो चाल बुझ्री पराइ बलियो बन्ला र हेप्ला बरु
बेलैमा नबुझ्री लडे यदि सधैँ बर्बाद होला अरु ॥३

खानी छन् तर छैन झिक्न पनि क्यै ढुङ्गै र चासो यहाँ

खाली भाषणमा सिपालु बहुधा हाकिम् र नेता जहाँ ।
भ्रष्टाचार् कमिशन् दुबै प्रिय बने कालोबजारी सँगै
अर्कै देश छिरे युवा र युवती रोज्गार देश्मा नभै ॥४

खैरे गो पसिना बगेन किन हे नेपाल खातिर् अनि
बस्ती रिक्त हुँदा कठीन हुन गो जन्ती मलामी पनि ।
मान्व तस्करले गरे अति यहाँ खप्नै नसक्ने गरी
बेचे मानव नै कठै शिव हरे ! भेडा र बाख्रा सरी ॥५

शाासन् खै विधिको ? अचम्म हुन गो कानुन् त कम्जोर भो
ढाँटेरै त सधैँ अघाँउछ भने दु:खै यहाँ गर्छ को ?
स्वार्थैदेखि त माथि उठ्नु परने वेला त आयो ल है
राज्नेता बन हे उठेर अबता नेता ल साँच्चै सबै ॥६

कालो धन् बटुली सदैव अरुको आँखी बनेरै अनि
जानै पर्छ कुनै उपाय नसुझी जाँदैन सिन्को पनि ।
विन्ती गर्छु म लौ सबैसँग ल है यी हात जोडीकन
राम्रो कर्म गरे सदैव रहने के गर्छ  चुत्थो धन ॥७

सत्ता त्यो अनि व्यक्ति फेर्न सजिलो होला कि साँच्चै बरु
फेर्नै मुस्किल पो रहेछ नरको त्यो सोच मन्को अरु ।
जैलेसम्म यहाँ हुँदैन नि नयाँ लौ सोच सब्को हजुर्
तन्त्रै एक् बदली भएन फरकै मन्त्रै बदल्नोस्  हजुर् ॥८

नेपालीपन खै ? कतातिर गयो त्यो सात् समुद्रै तरी
लामो त्यो कपडा अचानक उसै छोटो भयो के गरी।
आधा लाज जसोतसो हरघडी छोप्ता त ठीकै थियो
सर्वाङ्गै विचरा रहेन पहिरन् के छोप्न बाँकी रह्यो ॥९

*(छन्द : शार्दूलविक्रीडित)*

# नेपाल

सुन्दर देश अहो ! हिमालमुनिको नेपाल यो नाउँ छ
साँच्चै स्वर्गसमान यो मुलुक ता खोजेर को पाउँछ ?
उच्चा छन् हिमशैलका शिखर ती हाँसी बसेका अनि
मानौं स्वर्ग छुने विचार मनमा बोकी बसेका पनि ॥१

हर्दम् तान र गान कर्णप्रिय त्यो क्वैली र डाँफे दिने
इन्द्रेणीसँग नर्तकी मयुर ती जिस्केर फुर्की दिने ।
नौलो चिर्‌विर त्यो विचित्रसँगको आनन्द हर्षित दुवै
भाले डाक्छ प्रिया घुरेर विचरो हालेर ऊ राग् खुबै ॥२

कोशी ती सरिता जटा सहितकी सेती उता लुक्दछिन्
मेरो शक्ति अझै बुझेन नरले भन्दै उनी थुक्दछिन् ।
कर्णाली बहने विचित्र सँगले उस्तै गरी गण्डकी
त्यो बालापनझैं खुबै हरघडी खेल्छन् अनौठो गरी ॥३

ती राप्ती कमला, बबै बडो हुने वर्षा विना खस्कने

यौवन्‌की तरुणी मसक्क जसरी लज्जासहित् मस्कने ।
काली पश्चिममा बहन्छ कलकल् मेची भने पूर्वमा
खानी छन् बहुमूल्य शैलभरि नै नेपालका गर्भमा ॥४

आफ्ना यौवन दर्शितै हुने गरी फेवा र रारा उता
सुम्पी वक्ष गरुन् क्रिडा नर भनी तैयार छिन् सर्वदा ।
मस्ती लिन्छ मनुष्य ऊ तर कठै ! सोच्दैन कैल्यै पनि
गङ्गा हुन् सरिता र ताल नबुझी गर्दिन्छ फोहोर अनि ॥५

मेरो मर्म र धर्म शक्ति नबुझी लौ खेर फाल्यो भनी
क्रोधाग्नी सरिता बनी मुलुकमा गर्छिन् उपद्रो अनि ।
थामी सक्नु हुँदैन शक्ति उनको उन्मादमा मात्तिई
ढाल्छिन् वृक्ष नदीकिनार मनुवा बस्छन् सधैं आँत्तिई ॥६

माटो खण्ड हुने सुने यदि कतै टुक्रिन्छ हाम्रो मन
खण्डित् देश गरी छ स्वार्थ लुटने वैरी उता हर्दम ।
द्रोही देश डुबाउने विषयमा लागिरहेछन् कठै
मेची अश्रु खसाउने छ जहिल्यै काली दुखे कैं कतै ॥७

*(छन्द : शार्दूलविक्रीडित)*

## देशको माटो

देशको माटो यो मुटुभन्दा प्यारो छ मलाई
मान्दैन मन माटोको टीका नखेली नलाई ।

गाउँमा जाने छ मूलबाटो क्या राम्रो बनेको
मेसिन हैन नेपाली हात मिलेर खनेको। ।

गाउँछे चरी क्या मिठो गरी गोधुली साँझमा
प्रभाती किरण पहिला पर्छ नेपाल माझमा ।

हरिया वन खोला र नाला छाँगा र छहरा
गोठालो जाँदा खेलिन्छ पिङ बाँधेर लहरा ।

अति नै सुन्दर फूलको माला धागोमा उनेको
छ ढाका टोपी शिरमा मेरो हातले बुनेको ।

यो हावापानी प्यारो छ अहा ! प्यारो छ जीवन
गुराँस रातो शिरमा खुल्छ नपाए रिवन ।

यो ज्ञानभूमि यो पुण्यभूमि इमान अमर
हुँ शान्तिकामी नेपाली म त रोज्दिन समर ।

बहुल जाति, बहुल भाषा, धर्म छ बहुत
वेश र भुषा, कला र कौशल छ यहाँ पउल ।

पुर्खाको नासो यो देश मेरो आकार सानो छ
सगरमाथा विश्वको शिर त्यसैको छानो छ ।

छु स्वाभिमानी स्वाधीन पनि अन्याय गर्दिन
देशका निम्ति गर्दछु केही फजुल मर्दिन ।

छिमेकीसँग खोज्दिन निहुँ सम्बन्ध गाँस्दछु
मनमा ईर्ष्या नराखी दिल खोलेर हाँस्दछु ।

जहाँ म जाऊँ यो छातीभरि देशकै माया छ
अघि र पछि झल्झली सधैं अमिट छाया छ ।

शान्तिको गीत गाउँछु सधैं नेपाली तालमा
करोड तीन पयर चलुन् एउटै चालमा ।

यो देश बाँचोस् नेपाल हाँसोस् म मरी गए नि
सगरमाथा नझुकोस् कैल्यै अरू जे भए पनि ॥

*(छन्द : असारे झ्याउरे, लोक लयमा)*

## यो देश हर्दम उठोस्

शान्तैशान्त जताततै हरबखत् नेपाल हेरीकन
नेपालीजनको मुहार हँसिलो देखेर हर्दम् मन ।
पाऊँ पार्न खुसी म बिन्ति सबमा गर्दैछु साँच्चै यहाँ
आँखामा नबगोस आँसु कहिल्यै देखूँ म हाँसो जहाँ ॥१

थोपा रक्तसमेत खेर नबगोस् बेकाम यो देशमा
आफ्नैबीच महाँ कदापि नपरोस् सङ्ग्राम बेकारमा ।
देशैले यदि माग्छ यो रगत नै ठानेर खाँचो जब
हाँसी प्राण दिनै तयार म बनूँ त्यागेर स्वार्थै तब ॥२

कैल्यै खल्बल नै नहोस दुनियाँ त्यो एकता लौ रहोस्
देशै झल्मल होस् अखण्ड हरदिन् देखेर मनैं परोस् ।
नेपाली जनता बुझेर मनले निर्माण खातिर् जुटोस्
साँच्चै कोविद लौ बनुन् मुलुकमा यो देश हर्दम उठोस् ॥३

पाखा पर्वतमा सधैं फुलिरहोस् लालीगुराँसै भरि
इच्छापूर्ण  सबै यहीं भइरहोस् कैल्यै नहर्ने गरी ।

उल्टो कर्म कदापि गर्न नपुगोस् बिर्सेर मान्छे कुनै
आफ्नो साख सधैं बचाउन पुगोस् थामेर धक्का जुनै ॥४

चारौंतर्फ सुवास छर्न म सकूँ बेली-चमेली सरि
बालूँ दीप नयाँ यही जगविषे हर्दम ननिभ्ने गरी ।
त्यागी स्वार्थ सबै सदैव म बनूँ त्यो साधु गाई सरि
आफ्नै पौरखमा रमाउन सकूँ विश्वास ठूलो गरी ॥५

*(छन्द : शार्दूलविक्रीडित)*

## सुन्दर मुलुक

धर्तीकै अति सुन्दरै मुलुक रे ! नेपाल हाम्रो हजुर्
धर्ती मन्दिर हो भने यदि कतै नेपाल त्यस्को गजुर ।
दर्शन् गर्न भनी असल् मनुजता संसार घुम्दै यहाँ
भित्रिन्छन् सब लौ पवित्र मन त्यो पारेर हर्दम जहाँ ॥१

क्या सुन्दर हरिया वनै मन छुने क्वैली नि डाक्छे यतै
लाग्ने यो अलकापुरी सरह लौ यै देश होला कतै ।
इन्द्रै जो सुरका त  राज कन ती इर्ष्या त गर्छन् अरे
गरौं राज् धरती विषे यदि मिले भन्ने त इच्छा छ रे ॥२

ज्ञानी बुद्ध उसै गरेर  भृकुटी सीता र तेन्जिङ पनि
खेल्ने भूमि पवित्र यो अरनिको जन्माउने फेर् अनि ।
तप् गर्ने ऋषिले र साधुहरूले त्यो मुक्तिका खातिर
राजर्षी जनकै बडा सुमनझैं जन्मे यहीं आखिर ॥३

संसारै सबले बताउँछ यही भुल्नै नसक्ने अरे
भन्दै गौरव नै गरेर दिलले माया त ठूलो गरे ।

भाषा धर्म अनेक जात जसरी संस्कार बेग्लै अति
वेशभूषा मन लोभिने बुझ्नुहोस् सौन्दर्य उस्तै कति ॥४

गङ्गाको शिर यो पवित्र सरिता पग्लेर बग्ने हिउँ
झर्ना छङ्छङ त्यो झरेर बहँदा भन्दो छ मन्ले पिऊँ ।
छर्की त्यै जलले  पवित्र मन यो पारेर हर्दम उतै
आत्मा शुद्ध गरी सदैव रहने त्यो शान्ति मन्मा त है ॥५

मठ्मन्दिर् अति धेर छन् मुलुकमा पाटी र पौवा अनि
पुर्खाका रचना अमूल्य गहना गुम्बा र चैत्यै पनि ।
संसारै भरको बन्यो गजब भो सौन्दर्य साँच्चै कति
पौराणिक् चिज यी रहे जबतकै सन्तोष मिल्ला अति ॥६

चौंरी याक उता हिमालतिर लौ डाँफे मुनालै उहाँ
त्यस्तै मिर्ग छ कस्तुरी  गजबको छोडी सुवासै जहाँ ।
चर्दै हिँड्छ निकै खुसी मन गरी नाचेर उस्तै उहाँ
गौरीशङ्कर प्रेमले हरघडी खेल्थे नि त्यै ठाउँमा ॥७

डुग्री बाघ कराउने वनमहाँ खेली सिंगौरी पनि
हात्ती बाँदर छन् र भालुकन ती गैँडा र अर्ना अनि ।
खेल्दै ती चितुवा बँदेल मृग लौ थारल् र घोरल् जहाँ
नौलो दृश्य जताजतै वनविषे देखिन्छ शोभा उहाँ ॥८

पन्छी फेरि उसै गरेर चिरविर् ताना र गाना खुबै
दिन्छन् लौ जहिल्यै छ राग तिनमा भाले र पोथी दुवै ।
उड्दै शान्ति सधैंभरी छरिदिने सेता परेवाहरू
हर्दम् घण्ट र शङ्ख मन्दिरमहाँ गुन्जीदिने झन् अरू ॥९

यस्तो सुन्दर शान्त देश कनता संसार विश्वैभरि
देख्नै मुस्किल पो हुनेछ दुनियाँ खोजेर कस्तै गरी ।
ज्योतीपुञ्ज छ ज्ञानको हरघडी ती बुद्ध छर्छन् जहाँ
छाती गौरवले फुलेर शिर यो बन्दो छ उँच्चो उहाँ ॥१०

नेपाली हुनुमा छ गौरव उसै चाहे म खोले पिऊँ
बस्ताखेरि जता बसे पनि सधैं नेपाल सम्झी जिऊँ ।
अर्को जन्म कतै भए जगतमा यै देश रोजूँ म ता
योभन्दा अलकापुरी जगतमा दोस्रो म खोजूँ कता ?११

*(छन्द : शार्दूलविक्रीडित)*

# माटो

माटो हो सबथोक यो जगतमा पूजा यसैको गरौं
यै माटो धन हो तथापि सबले बुझ्दैन के पो गरौं ।
जन्मी मानव भै पछाडिकन फेर् बित्नेछ आखिर् यहीँ
राम्रो कर्म गरे सुवास रहने जाँदैन खेरा कहीँ ॥१

माटोमै पसिना बगाइ धरती फुल्ने छ फुल्ने छ त्यो
चारैतर्फ हराभरा हुन गई उघ्रेर खुल्ने छ त्यो ।
बन्ला स्वर्गसमान यो जगत नै वास्ना अनौठो गरी
देला मग्मग त्यो विचित्रसँगले हर्दम् नटुट्ने गरी ॥२

माटोमै पसिना बगाइ हरदिन उब्जाउ गर्नेहरू
भोकै छन् विचरा अनाज नमिली खान्छन् नगर्नेहरू ।
को सुन्ला उसको पुकार कहिले खाला नि कैले बरा
छाप्रोबाट नयाँ बनाइ दरिलो सर्ला ऊ आफ्नै घर ॥३

*(छन्द : शार्दूलविक्रीडित)*

# सुगौली सन्धि

देश्का खातिर वीर् लडे सकल ती त्यागेर ज्यानै पनि
ठूलो यो मुलुकै बुझेर तिनले सङ्ग्राम रोजे अनि ।
गौराङ्गै सँगको लडाइँ जबता चम्केर बढ्दै गयो
धेरै नास भएर त्यस् बखतमा खप्नै नसक्ने भयो ॥१

के नारी पुरुषै तयार सब थे त्यो उच्च राखी शिर
खाना छैन उता न जल् छ पिउने घेरा छ चारै तिर ॥
तालिम् छैन बरा ! न पो छ हतियार् गोला र वारुद अनि
थोरै थे भरुवा त बन्दुक अरे ढुङ्गा र खूँडा पनि ॥२

नेपाली खुकुरी कसैसँग भने थ्योरे घुँयेत्रा अनि
लौरा रे कतिका त हात हँसिया खुर्पा त क्वैका पनि ।
यस्ता रित्सित ती लडे नि विचरा ! नेपालका खातिर
वैरीतर्फ भने थिए नि हतियार् ती तोप बन्दुक तर ॥३

गोला बारुदको न क्यै कम थियो तालिम् नि उस्तै अरे
सर्बैचिज् भरिपुर् भएर तिनले जित्ने घमण्डै गरे ।

गोरा ती हतियारले सजित थे नेपाल खाने गरी
सुर्यास्तै नहुने मुलुक् उपनिवेश् कायम् त विश्वैभरि ॥४

बस्थे भारतमा त शासन गरी त्यो कम्पनी नामले
हत्याए मुलुकै कठै सहजमा उद्योग् र त्यो दामले ।
सोही रित्सित नै सकिन्छ लिन यो नेपाल भन्ने थियो
यस्ता आसयले अनेक् तरहका लोभै र धम्की दियो ॥५

नेपाली न फसे न लोभ तिनका डर्थे न धम्की गरी
त्यस्कारण् त छ ठाउँबाट हमला गर्ने त पक्का गरी ।
हाम्रातर्फ बढे, तयार कम थ्यो धेरै न सेना थिए
यस्तैमा पनि ती बढे लडनमा हुंकार ठूलो दिए ॥६

किल्ला देउ्थलमा त वीर भनिने ती भक्तिथापा थिए
छप्काए कति वीरका शिरहरू हिम्मत अनौठो लिए ।
तीसैकम् सयमा त वर्ष उनको त्यो बाल सेतै थियो
वैरीसामु कवै झुकेन शिर त्यो हाँसेर ज्यानै दियो ॥७

गोला बारुदको न ख्याल तिनले राखे न बन्दुक तिर
कब्जा गर्न त तोप त्यो अघि बढे लागेर गोली तर ।
त्यागे प्राण कठै ! पुगेन उनको धोको त लड्ने जहाँ
वैरीले पनि लासमाथि उनको सम्मान गर्दै उहाँ ॥८

दोसल्ला पहिरीदिएर अति नै तारिफ् गरेछन् पनि
हाम्रा वीर महान लौ मनुज यी दुस्मन् त हुन् है भनी ।

किल्ला नायक ती ढले पनि अरू लड्थे नि हिम्मत गरी
दोतर्फै अति नै बग्यो रगत त्यो संग्राम ठूलो परी ॥९

लड्थे वीर् बलभद्र फेरि उसरी दुर्गै खलङ्गामहाँ
स्वास्नी मानिस औ पुरुष् सबगरी जम्मा छ सौथे जहाँ ।
आत्मबल् बहुतै गरेर सब ती बस्थे नि कम्मर कसी
घेर्यो चारतरफ् मुहान जलको रोक्यो नि वैरी पसी ॥१०

पानी खानसमेत् नपाइ विचरा ! लड्नै परे तापनि
बाँच्ने वीर त सत्तरी चलिगए निस्केर अन्तै अनि ।
यस्तै रित्सितले निकै तिर खुबै वैरी बढेथे जहाँ
नेपाल्को दरबारमा खलबलै गो मच्चिँदै फेर् तहाँ ॥११

गोर्खा वीर भनेर लेख्न त गयो हाम्रो शिलालेख् अनि
सम्मान् गर्न पुग्यो पराक्रम बुझी वैरी त वीरको पनि ।
यस्मै गौरव छौं पराजित अलिक् भोग्नै परेता पनि
के पो चल्छ अधिक् जवान हतियार् बीचै त कस्को अनि ॥१२

दुर्गै राम्गढमा थिए  अमरसिङ् थापा त दुर्गै पति
वैरीसामु लडे घसेर त घुँडा लागेन पारै कति ।
गोला बन्दुक बीचमा त खुकरी कम्जोर जस्तै भयो
केही सिप् नचलेर फौज् पछि सरी छाडेर पश्चिम गयो ॥१३

धेरै नास भयो दुवै तरफ नै त्यो जन् र धन्को उहाँ
हाम्रोचाहिँ झनै अधिक् हुन गयो त्यो हानि साँच्चै तहाँ ।

वैरी पेल्दछ त्यो अगाडि र बढी क्वै ठाउँ छाड्नै पर्यो
त्यस्लाई पनि टिक्न मुस्किल हुँदा हट्ने र बढ्ने गर्यो ॥१४

कर्नेल् त्यो उडको त फौज् उजिरसिङ्ले ध्वस्त विघ्नै गरे
तोप्खाना अफिसर् त एक बचिए बाँकी त हुन् जो मरे ।
थे बम्शाह र फेरि वीर रणवीर् थापा त उस्तै थिए
जस्ले दुस्मनमाथि त्यो बुझ्नुहोस् धक्का त ठूलो दिए ॥१५

यै रित्ले त लडाइँ भो तर कसो पेलेर वैरी छ जो
अर्को फौज नयाँ र हात्हतियार् थप्ने र लड्ने भयो ।
हाम्रातर्फ भने गएर लडने सेना त घट्दै गयो
त्यस्तो भो कसरी बचाउनु मुलुक् चिन्ता त ठूलै भयो ॥१६

०००

प्रधान्मन्त्री भिम्सेन् जब त अधिकै चिन्तित थिए
भयो छल्फल् ठूलो तब त अरुले तर्क नि दिए ।
लडौं उल्टो देशै पनि त गुमने सम्भव थियो
नगर्ने युद्धै त्यो भनिकन तहाँ पारित भयो ॥१७

भयो सन्धी अङ्ग्रेज्सँग जब सुगौली तब उहाँ
जितेका वैरीले समथर निकै भूमि त जहाँ ।
भयो छाड्नै  पर्ने जब त अति बिघ्नै तब तहाँ
पर्यो नेपालीको मनमनविषे चोट्  अनि उहाँ ॥१८

लडौं त्यो बेलामा मुलुक अति नै घायल थियो
जितेमा वैरीले तब त सब खाने पनि भयो ।

पर्यो धर्मैसङ्कट् विवशसँगले  सन्धि त भयो
मुलुक्को त्यो नक्शा अनि त पछि सानो हुन गयो ॥१९

जितेका पुर्खाले रगत पसिना खर्च त गरी
गुम्यो विस्तार्वादी रिपु त अति धुर्तै हुन गई ।
सियो बन्दै पस्ने मुशल त बनी निस्कन अनि
अत्यन्तै पारङ्गत् जब त बलशाली सित पनि ॥२०

लडे पुर्खा हाम्रा सब त अधिकै साहस लिई
त आफ्नो ज्यानै त्यो पनि मुलुकखातिर् अनि दिई ।
चिने बैरीले त्यो पनि छ अधिकै वीर त भनी
नसक्ने ठानी त्यो सब त मुलुकै खान त पनि ॥२१

उसैले भो सन्धी न त र कसरी यो हुनि थियो
भयो जे त्योबेला समय पनि त्यस्तै जब थियो ।
भयो ठूलो, सानो मुलुक जब हाम्रो तर पनि
सकेनन् सिङ्गै त्यो सहजसित निल्नै तब अनि ॥२२

निल्यो कत्रा कस्ता मुलुक सहजै तापनि उहाँ
शिकारी त्यो वैरी पनि त नसकी जित्न त यहाँ ।
अनौठो मानी ऊ जब मुलुक आफ्नैतिर गयो
यसैमा लौ गौरव् अलिक गरनै पर्नि त भयो ॥२३

*(छन्द : पहिलो- शार्दूलविक्रीडित, दोस्रो- शिखरिणी)*

# विद्याको महिमा

विद्याको महिमा बताउँछु सखे यो गुप्त धन् हो अति
साँच्चै यो सबमा छ उत्तम बुझौं सुधार्छ हाम्रो मति ।
चुर्णै पार्छ सबै अँध्यार यसले राख्तैन बाँकी रति
यो हो लौ बुझ कामधेनु सरिको फाल्दिन्छ दम्भै जति ॥१

बोक्ता भार हुँदैन कत्ति पनि लौ बाँडेर बढ्ने बरू
साथी हो परदेशको बुझनुहोस् सोभा दिने झन् अरू ।
बाँचुन्जेल् रहने मरेपछि समेत् त्यो कीर्ति थामी दिने
यो मन्मा अति नै चमक् चहकिलो चम्काइ हाम्रो दिने ॥२

कालीदास् अनि भानुभक्त सजिलै वेद्व्यास कस्ता भनी
देव्कोटा फेरि लेखनाथ समजी वाल्मीकिजस्ता पनि ।
जन्माई सहजै दिने मनुज ती विद्या त त्यस्तो छ रे
जस्ले बुझ्न सक्यो त बन्छ अमरै मर्दैन कस्तै गरे ॥३

विद्याकै भरमा पुगे मनुज क्वै चन्द्रै त चुम्नै पनि
विद्याहिन् घर बाहिरै पनि सहज् सक्तैन घुम्नै अनि ।

युग् भो आज ल है अनेक विधिको बुझ्दैन विद्याविना
लाटोझैं बनिने दुनियाँ नबुझी गाह्रो छ लेनादिना ॥४

पीडा भुल्न यहाँ सघाउँछ सधैं माता समानै अनि
हर्दम आँट दिने रहेर मनमा चोर्दैन चोर्ले पनि ।
तस्मात् यो विनती म गर्छु सबमा विद्या समान् लौ कुनै
हित्कारी प्रिय यो मितै सरहको सक्तैन अर्थोक हुनै ॥५

सुन्दर छौं बलिया धनी पनि त छौं छैनौं कमी क्वै महाँ
विद्या छैन भने पलाँस फुलझैं निर्वासना भो उहाँ ।
बोलेनौं रसिलो सभामहलमा व्यर्थै हुने भो हरे
धैर्य थाम्न बडो कठिन् छ बहुतै आपत्ति केही परे ॥६

क्षेमा, शील, दया, सहिष्णु, करुणा सन्तोष मन्मा लिने
आत्मा साफ गरी फुरुङ्ग मन यो पारेर हर्षै दिने ।
विद्या यो लिन बेर गर्‍यौं यदि भने जीवन त व्यर्थै हुने
पश्चाताप भई सदैव शिव हे ! सम्झेर हर्दम् रूने ॥७

धर्तीमा गुणदोषयुक्त सबथोक् देख्छौं नि हामी सबै
विद्या दोषरहित् छ एक गुनले मात्रै त पूर्णै ल है ।
यस्तो चिज् लिन बेर गरेर नबसौं त्यागेर केही अरु
विद्याधन् सबले बटुल्न हरदिन् मौका त छोपुन् बरू ॥८

लाखौँ छन् छनता अमीर कति लौ खै नाम तिन्को कहाँ
विद्याकै सबले प्रयोजन गरी त्यो नाम राखे यहाँ ।
विद्याको महिमा बुझेर सबले रस्पान गर्ने गरौँ
लाखौँ सूर्यसमान् छ तेज यसको सम्पूर्ण कल्मष् हरौँ ॥९

*(छन्द : शार्दूलविक्रीडित)*

## कोही सुरा सुन्दरी

कोही चुस्नमहाँ रमाउँछ यहाँ कोही सुरा सुन्दरी
कोहीका सुकुमार हात बहुतै क्वैका भने चर्चरी ।
क्वैको पेट भरिन्छ टन्न सँगले क्वैको भने रित्तो छ
हर्दम् फुर्सदमा रहन्छ मनु क्वै क्वैको भने बित्तो छ ॥१

देखी मान कुनै डराउँछ यहाँ जोगाउने बातमा
कोही ठान्दछ मान हर्दम रहोस् सामर्थ्य औ हातमा ।
स्वार्थै पूर्ण गरूँ अनन्ततक त्यो भन्ने इरादा धरी
आफैं मालिक भै अचम्मसँगले गर्छन् यहाँ मन्परी ॥२

साँढेतुल्य बनी सताउँछ अहो क्वै विघ्नबाधा गरी
निर्धाका सबथोक लिन्छ सहजै हड्पेर आफ्नै सरि ।
उसका सामु कुनै न बोल्छ सहजै हान्ला र मार्ला भनी
छाडी जानुछ यी सबै चिज भनी सोच्दैन कैले पनि ॥३

कोही साधुसमान् पराइजनको गर्छन् भलो बेसरी

अर्कैका हित निम्ति हर्दम खडा आफू नखाई वरि ।
आफ्नू मासु दिई बचाउ अरूको गर्दा भए जो जन
त्यो नामै शिबिको सुनेर अहिले पग्लन्छ हाम्रो मन ॥४

तस्मात् यो नरले बुझेर कहिल्यै जानी कसैको पनि
किञ्चित् चित्त कतै दुखाउन पुगे होला अनर्थै भनी ।
हिंसा गर्न भुली पवित्र मनले सो मार्गमा चल्नु छ
त्यागी दम्भ परोपकार अरूको ज्ञानी बनी गर्नुछ ॥५

*(छन्दः शार्दूलविक्रीडित)*

## खेलेर जीवन गयो

खेलेर जीवन गयो पनि चेत छैन
थाहा भयो तर अझै मति सुध्रँदैन ।
रोपैँ न कीर्ति कहिल्यै न त राम गाएँ
बाँच्ना निमित्त म त केवल माम खाएँ ॥१

पोलीरहेछ मन यो पछुतो छ ऐले
के गर्न सक्छु अबका दिनमा त मैले ।
सक्ने गरूँ परहितैसँग राम गाऊँ
त्यागेर दम्भ मनका कछु शान्ति पाऊँ ॥२

कालो छ यो मनबिसे अझ शान्ति छैन
पाना सबै हृदयका पनि खुल्नि हैन ।
रोपे त कीर्ति अहिले अनि उम्रिएला
धीरा भई बसिरहे पछि फल्छ होला ॥३

ढाँटेर जीवन महाँ पनि क्यै नगर्नू

थाहा भएपछि वहाँ हुन जान्छ मर्नु ।
थापेर हात कहिल्यै पनि माग्नु छैन
चुक्ली कुरा पनि कवै गरि हुन्न चैन ॥४

जाती बनेर सबको उपकार गर्न
साह्रै कठिन् छ पनि त्यै तर पर्छ गर्न ।
पीडा सहेर जगमा पनि बाँच्न गाह्रो
निर्धो भए अझ झनै अति हुन्छ साह्रो ॥५

यो देशका जनहरू सब हुन् निरोग
यो देशका मनहरू सब हुन् नि योग ।
यो धर्म शान्ति दिनदिन् अझ सुन्दरै होस्
पाएर कीर्ति गतिलो अनि देश फक्रोस् ॥६

*(छन्द : वसन्ततिलका)*

## किन नि विभेद ?

मनको बह म कहाँ पोखूँ सुन्दिने क्वै छैन
मानिस सबै मिलेर बसौँ मानिस भन्दैन !

पढेको छैन अछुत पनि धनको भिखारी
दुःख म गर्ने साहुको चाहिँ भरिने भकारी ।

म मूर्ति कुँध्ने गजुर पनि मैचाहिँ बाहिर
जो कामचोर उपदेश दिन ऊ अति माहिर ।

त्यो मेरो सीप शिरमा चढ्छ पवित्र भएर
म भने ढोका बाहिर हरे ! अपमान सहेर ।

धरतीमाता रोएर भन्छिन् विभेद नगर
नश्वर देह कुनै दिन बन्छ अवश्य बगर ।

अन्याय भयो मनले भन्छ मुखले खोल्दैन

वीरेका सामु त्यो लुरे कान्छो कहिल्यै बोल्दैन ।

के जित्छौ तिमी महल जोडी छाडेर जानु छ
दुनियाँ मारी जाडेको धन न सँगै लानु छ ।

उपकार गर सकेको जति नसके कर छैन
विगार केही नगरेदेखि यमको डर छैन ।

अलकापुरी के राम्रो होला धरती छाडेर
इन्द्रजी पनि गर्दछन् इर्ष्या नजर गाडेर ।

धरती हाम्रो बन्दछ स्वर्ग यो दिल खोलेमा
कस्ले पो भन्ला नराम्रो भनी मधुर बोलेमा ।

शान्तिको दीप बल्दछ यहाँ निस्वार्थ भएमा
सुखको दिन अवश्य फिर्छ त्यो दुःख सहेमा ॥

*(छन्द : प्रचलित असारे झ्याउरे)*

# ठूलो होइन असल बनोस्

बाँचेरै पनि जो कुनै असल क्यै गर्दैन के काम भो
मर्ने जो गतिलो छ काम् यदि भए संसार जित्ने छ त्यो ।
केही दिन्छ समाज देश कन ता त्यागेर आफू कुनै
काफी हुन्छ उही बुझ्यो यदि भने पर्दैन चन्द्रै छुनै ॥१

तस्मात् यो सबले बुझी असल काम् हर्दम् गरून् लौ यहाँ
हिंशा त्यो कहिल्यै भुलेर पनि लौ गर्ने नहोस् क्वै जहाँ ।
जन्मी मर्नु अवश्य पर्छ सबले बाँच्दैन हर्दम् कुनै
त्यागी व्यक्ति समान यो जगतमा सक्तैन केही हुनै ॥२

आफ्ना पेट् पशुले समेत विचरा पाली रहेछन् जसै
मान्छे भैकनता विचार अरूको गर्ने गरोस् फेर तसै ।
यस्तो गर्न सकेन लौ यदि भने पीडा नदेओस् उहाँ
आफ्नै पौरखमा रमोस् मनु सधैं हाँसेर सत्मार्गमा ॥३

ज्ञानी बन्न सकोस् सबैतिर उही त्यै ज्ञान छर्ने गरोस्

बाँझा ती सबका छ खेत मनका हाँसेर हर्दम खनोस् ।
कालो बादल हैन जून भरिलो जस्तो त पारी मन
ठूलो हैन असल् बनोस् नर यहाँ ऊ गर्व त्यागीकन ॥४

*(छन्द : शार्दूलविक्रीडित)*

# वेला

के थाहा कहिले कता र कसरी जाईन्छ कुन् लोकमा
पुग्ने ठाउँ कुनै ठिगान नहुने गल्ली कि क्वै चोकमा ।
होओस् लौ फकिरै महान अमिरै विद्वान वा मुर्ख नै
राजा-रङ्क महाँ विभेद उसले छानेर गर्दैन है ॥१

लाटो वा अति नै चलाख बलियो जस्तो भएता पनि
घोकेठ्याक गरी निमेषभरमा लानेछ उस्ले अनि ।
लुक्ने औशर वा नभाग्न पनि त्यो मिल्दैन कस्तै गरे
एक्लै विश्व नचाउने नि मनुवा उस्कै मुखैमा परे ॥२

देख्ने हैन नि त्यो अमूर्त कपटी चण्डालभन्दा कडो
किञ्चित छैन दया कठोर दिलको खाता विचारी बडो ।
भाखा नाघ्न दिँदैन ऊ मनुजको झुक्केर हान्दैन नि
बालो, वृद्ध, जवान क्यै फरक नै गर्दैन वैरी अनि ॥३

आजै मर्नु अचम्म हैन जसरी बाँचिन्छ अर्को दिन

यस्तो दिव्य कुरा भुली अझ खुबै हर्दम् छ बाँच्ने मन ।
औँठाछाप दुबै गरी उस दिनै आयौँ नि धर्तीमहाँ
ऐले जान्न भनेर मुक्ति विचरा ! देला र उसले कहाँ !४

*(छन्द : शार्दूलविक्रीडित)*

## हे श्रीराम

हे श्रीराम अनन्त हे सुर तिमी चौधै भुवनका धनी
साक्षात् ब्रह्म तिमी चराचर जगत कल्याण गर्ने पनि ।
ऐले फेरि बढ्यो अधर्म जगमा भूमार उस्तै गरी
पैले झैँ गर राज्य मानुष बनी त्रैलोक्यका नाथ् हरि ॥१

किनबेच् मानिसको अचम्म हुन गो मौल्यो बलत्कार अनि
भष्ट्राचार् कमिशन् उँचोतिर गए बिर्सेर धर्मै पनि ।
वाली रावण झैँ गरेर तिमीले फेर् वाण ताकीकन
मारे दुष्टहरू चुनीकन सबै खुस् हुन्छ हाम्रो मन ॥२
(छन्द : शार्दूलविक्रीडित/भाव : भक्तिधारा)

# आयो कम्प कराल

आयो कम्प कराल यो मुलुकमा सालै बहत्तर्महाँ
वैशाख बाह्र थियो मनाउन नयाँ हर्षै र उल्लास जहाँ ।
पूरै देश् शुभकामना दिनलिनै तल्लीन थियो त्यै घरि
भौतिक् संरचना  त ध्वस्त कति भो भन्नै नसक्ने गरी ॥१

नेपाली सबको ढल्यो धरहरा आस्था र विश्वासको
गुम्बा मन्दिर ती चरक्क चिरिई फाटेर क्वै लड्दियो ।
बस्ती मानवका उजाड हुन गो धेरै त ठाउँ महाँ
तत्काल बन्द भए अनेक सुविधा बाटो र संचार जहाँ ॥२

खायो प्राण त नौ हजार जनको पारेर घाइते कति
सम्झेर अहिले समेत सबको पोल्दो छ मन् भत्भति ।
खप्नै मुस्किल भो सुनेर समचार् रोयो नि देशै जहाँ
तत्कालै शुरु भो उदार मनले उद्धार गर्नै तहाँ ॥३

राज्धानीसहितै त कम्प छरियो जिल्ला त बत्तीस्महाँ

सक्दो देश विदेशबाट सहयोग् टोली खटेथे जहाँ ।
गोर्खा  केन्द्र भई त कम्प शुरु भो टिक्नै नसक्ने गरी
छोड्यो छाप कठै ! अमीट दुनियाँ सालै त नब्बे सरि ॥४

ध्वस्तै भो परिवार काख कतिको रित्तो बन्यो त्यो घरि
खाली भो सिउँदो लुट्यो रहर सब् कैल्यै नभिझ्ने गरी ।
कस्तो निष्ठुर त्यो बन्यो उसघरी वर्षौं गयो कम्पफेर
छिन्मै नष्ट गऱ्यो निमेषभरमा लागेन कौनै अबेर ॥५

*(छन्द : शार्दूलविक्रीडित)*

# धर्म नै प्राण हो

हिन्दू धर्म समाप्त पार्न बहुतै राखेर इर्ष्या जहाँ
पस्तै छन् डलरै लिएर बुझनू गाऊँ र बस्तीमहाँ ।
गुम्बा मन्दिरछेउ बन्न त गए ती चर्च आश्चर्य भो
लुब्धा मानिस छन् सधैँ धनतिरै चाला त बुझ्दिन्छ को ?१

देखाई हरियो छ घाँसकन त्यो पारेर लोभै महाँ
जस्ता रित्सितले बली त पशुको दिन्छन् पुजारी जहाँ ।
सोही रित्सितले त आज सहजै पस्दै छ कौनै धरम्
मान्छे किन्दछ ऊ हरेक् तरहले केही नमानी सरम् ॥२

आफ्नै चालचलन् छ प्राण सरिको यस्कै जर्गेना गरौं
आत्मा संस्कृति हो र धर्म पनि त्यै ठानेर पूजा गरौं ।
आत्मा बेच्नु कदापी हुन्न नरले बेचे त दुर्नाम भो
फिर्ता फेरि हुँदैन अर्थ जति नै पेलेर के काम त्यो ॥३

कस्ले माग गऱ्यो र धर्म सजिलै बेच्यौ नि हिन्दुत्व नै

राज्संस्थासँग क्यै थिएन उसको नाता र सम्बन्ध क्यै ।
व्यर्थै मार्न पुग्यौँ नि धर्म किन हे ! संस्कार खेरै गयो
जस्का कारणले खुलेर धमिरो नेपाल छिर्दो भयो ॥४

*(छन्द : शार्दूलविक्रीडित)*

## नखोजौँ मान

स्वागत् गर्छु म शब्दबाट बुझ्नू यी हात जोडी दुवै
हाम्रा आग्रहले उपस्थित सबै मान्नेजनैमा खुबै ।
वार्षिक् उत्सव यो सफल् हुन सकोस् मंगल रहोस् कामना
बाधा अड्चन क्यै परे यदि कतै होला मिली सामना ॥१

शब्दैको दुनियाँ रहेछ बुझ्नू मैले नि शब्दै धरेँ
सम्बोधन् पनि आज शब्द वटुली नौलो चलन् पो गरेँ ।
ठूलो भो सबले नभन्दिनु सखे इच्छा अनौठो भनी
आगामी दिनमा म फेरि गरूँला सम्बोधनै लौ अनि ॥२

कैल्यै खोज्नु हुँदैन मान नरले, त्यो मानदेखी डर
जस्ले लिन्छ अवश्य पर्छ सजिलो त्यो तत्व बुझ्ने गर ।
पाएमा पनि मान थाम्न उसले मुस्किल् छ कर्तव्यको
जसले थाम्दछ त्यो महान बुझ्नू थामेन बेकार भो ॥३

कर्तव्यै सबको अमूल्य गहना शोभा दिने लोकमा

क्वैबेला अधिरै रहन्छ मनु त्यो पर्दा भने झोकमा ।
जस्तै विघ्न परोस्  अभाव पनि होस् थामेर कर्तव्य जो
बढ्दै जान्छ अगाडि त्यो नर भने हल्लाउनै सक्छ को ?४

खाली गाँस कपास निम्ति जहिल्यै चर्को लडाइँ हुने
दर्जा, मान र सान निम्ति जहिल्यै अर्को लडाइँ हुने ।
आफ्ना वन्धु बिचै बडो हुन भनी घरको लडाइँ हुने
एकै मानव हौं तथापि जहिल्यै थर्को लडाइँ हुने ॥५

लङ्का दन्दन दन्कियो अहमले अर्ती नलागी कनै
त्यस्तै कौरवको विनाश हुन गो आश्चर्यलाग्दो झनै ।
कैल्यै त्यो कुभलो नहोस् जगमा भन्नेछ आफन्तले
तस्मात् दम्भ बुझौँ सदैव यमझैँ त्यागनै भलो सन्तले ॥६

*(छन्द : शार्दूलविक्रीडित)*

## गुराँस लौ रातो

गुराँसै लौ रातो मनमन लगाऊँ शिर उपर्
भनी तामाङ्नीले टिपिकन लगाइन् अति असल् ।
दियो शोभा कस्तो मकन कसरी वर्णन गरूँ
कि लेखी चेलीकै नुतन कविता पत्र म भरूँ ॥१

झिकिन् डल्ले ऐना नविन सजियो रूप उनको
हट्यो पाङ्ग्रे चेप्टे शिरफूलसमेत् मोह सुनको ।
अहा ! कस्तो दामी सुन अकबरे झैँ हुन गयो
विना पैसा मिल्ने तब त उनको मन् खुस भयो ॥२

धरिन् साडी चोली कमर पटुकी टन्न कसियो
पछ्यौरीको सप्को अतिवसँगले हेर सजियो ।
चुरी छिन्छिन् बज्दा मधुर धुन लौ निस्कनि भयो
खुलेका ती आँखा परपुरुषमा जुध्न त गयो ॥३

भिरिन् चाँदीबाला सुन त भइगो दूर उनको

निकै गर्छन् माया विचर उनले गर्नु कुनको ।
नछानौं जोडा क्वै वय त सहजै उम्कनि भयो
म छानौं भन्दैमा दिन पनि बिती तीस् कटि गयो ॥४

*(छन्द : शिखरिणी)*

## पाएमा चुक

आफ्ना आङमहाँ जनावरसमेत् देखिन्न हिँड्दा पनि
निन्दा त्यो अरूकै गरेर विचरा हिँड्दो छ हर्दम अनि ।
पाएमा चुक नै भए पनि कठै ! पाथी त बाह्रै पनि
चुस्नैपर्छ भनी अहोदिन ढुकी मौका बिचार्ला अनि ॥१

ताप्के तात्नु कता कता छ पहिला तात्यो भने बिँडु जहाँ
दूधै तात्नु दुरै हुनेछ विचरा ! होला अनर्थै उहाँ ।
ज्यादा उम्लन गो भने पनि उसै पर्ने छ भुङ्ग्रोमहाँ
साह्रै ठिक्क छ पार्न मुस्किल सखे यस्तै छ संसार यहाँ ॥२

फुल्दो फूल गुलावको जगविषे सुन्दर बनेको कति
हेर्दै मोहित भै उतैतिर हुने हाम्रो नि लौ मन् अति ।
लाग्ला दाग कतै छ पीर मनमा लाग्दैन निद्रा रति
यस्तै सोच हुँदा कठै ! विचरीको पोल्दो छ मन भत्भति ॥३

त्यो पापी असिना बतास उसरी झारौँ कि भन्ने लुकी

चर्को घाम डसी म खप्न नसकी जौँला कि आफैँ सुकी ।
कीराले पनि काट्न सक्छ कहिले चुस्ला चरीले अनि
यस्तो दर्द बुझीदिने मन हरे ! को पाउँली मै पनि ॥४

कालो बादल त्यो अघोरसँगले ढाक्यो नि चारैतिर
वर्षा विघ्न परेर फेरि घरखेत् बग्ला कि भन्ने पिर ।
धर्ती कम्पन फेर् भएर झुपडी सुत्ला कि ऐले जहाँ
आई फेरि तुफान बेगसँगले देला कि धक्का यहाँ ॥५

नेपाली जनका पवित्र मनका उद्‌देश्य पूर्णै हऊन्
सक्दा मिल्न यहाँ सबै मनहरू हेप्ने छ बैरी कउन् ?
कस्ले रोक्दछ लौ वसन्त जगमा रोकेर रोकिन्न रे
सौन्दर्य उसको न घट्छ कहिले छोपेर छोपिन्न रे ॥६

*(छन्द : शार्दूलविक्रीडित)*

## नयाँ संवत् २०७४

आए सम्वत ती नयाँ कति यहाँ गन्नै नसक्ने गरी
के-के भो धरतीबिसे सबकथा भन्नै नसक्ने गरी ।
पाङ्ग्रो घुम्दछ त्यो निमेष भर नै रोकिन्न गाडी महाँ
सोही रित्सितले त घुम्छ समयै छेकिन्न उस्तै यहाँ ॥१

धेरै हर्षित त्यो भए पनि सधैँ बस्तैन उस्तै कवै
हाँसोआँशु दुबै समान सँगले चल्दो छ हर्दम खुबै ।
धेरै द्वन्द्व चली मुलुक थलिन गो उठ्नै नसक्ने गरी
जित्ने आखिर क्वै भएन विचरा ! देशै त हारे सरि ॥२

सोभ्रा मर्न पुगे बग्यो रगत त्यो खोलै समानै यहाँ
ठूलो चोट पर्यो सबैतिर अहो ! लागेन घामै उहाँ ।
सम्भ्रौता हुन गो र शान्ति पनि भो सालै त्रिसठ्ठी थियो
यस्ले देशमहाँ अमीटसँगले चिनो अनौठो दियो ॥३

केही शान्ति भई विधान पनि त्यो बन्दै गएथ्यो जब

थाप्यो दक्षिणले अनेक बखडा  लागेन नौनी तब ।
खोज्नेले पनि खोज्नुपर्छ हक त्यो मिल्ने र पाउने जति
टक्का बाह्र भनी अडान गरिए होला अनर्थै अति ॥४

रोकी राख्नु कदापी हुन्न हक त्यो जानेर जिम्मा दिनू
मिल्दैन दिन त्यो भने यदि कतै मिल्दैन नै भन्दिनू ।
झुक्याईकन राज्य गर्नु नरले बेकार होला ल है
राज्नेता कहिने महान जनमा मेरो पुकारा छ है ॥५

०००

चौहत्तर् नव वर्ष आँगन महाँ टेकेर नाच्दै छ त्यो
नेपालीजनको बुझी कलह फेर् देखेर हाँस्तै छ त्यो ।
एकै देश हिमाल् पहाड उसरी एकै तराई पनि
व्यर्थै आज लडे विचित्रसँगले तेरो र मेरो भनी ॥६

आआफू नबुझी सदैब लडदा हेप्ने छ बैरी झनै
यस्तै चाल अझै निकै चलिरहे गुम्ने छ आफ्नोपनै ।
हाम्रो देश अहो ! अखण्ड जगमा हाँसेर बस्ने गरोस्
अज्ञानी मन त्यो सदैव खुस भै सोचेर लौ जल् भरोस् ॥७

खण्डित् देश बनाउने हक कठै ! कस्ले त देला कहाँ
इञ्ची भूमि समेत् छुटिन्न बुझनू टुक्रा त छाडौं यहाँ ।
बल्लै पर्दछ त्यो अखण्ड दिप लौ चम्केर हर् साँझमा
कैल्यै शान्ति बिथोल्नु हुन्न बुझनू नेपालको माझमा ॥८

हामी मिल्नु सिवाय छैन रतिभर् कौनै उपायै यहाँ
मिल्दा शान्ति अवश्य हुन्छ बुझ्नू सम्पूर्ण देशै महाँ ।
साँच्चै यो नववर्ष उत्तम बनोस् मंगल् रहोस् कामना
बाधा विघ्न कथम् परे यदि भने गर्ने गरौं सामना ॥९

*(छन्द : शार्दूलविक्रीडित)*

## चैत

लाग्यो चैत हुरी बतास बलियो ढाक्यो तुँवालो भरी
छारो नेत्रमहाँ परेर बहुतै खप्नै नसक्ने गरी ।
नाङ्गा वृक्ष जतातत‍ै जगतमा लाग्यो डढेलो उता
आगलागी शुरू भो जले घर कठै ! आश्चर्य मान्छु मता ॥१

सेतो त्यो हिमझैँ झरेर असिना बर्सन्छ थाप्लो महाँ
छानो छैन उता उडेर घरको भागेर जाने कहाँ ?
धर्ती कम्पन जोडले हुन गई काँपेर थर्थर हुने
ठूलो त्राश अहो छ बालबबुरा तर्सेर हर्दम रूने ॥२

कालो रौद्ररूपै भएर गगनै त्यो अन्धकार छर्दछ
छिन्मै मौसम त्यो विचित्रसँगले बद्ली हुने गर्दछ ।
क्रोधी भैकन इन्द्र बज्र अति नै ऊ गर्वले झार्दछ
चम्की त्यो बिजुली चट्याङ विचरा ! मान्छेहरू मार्दछ ॥३

दानो छैन किसानको घरमहाँ त्यो अन्नको आखिर

बारी खेतमहाँ म रोप्नु कसरी भन्दै लिँदा हुन् पिर ।
बाह्रै मासमहाँ दरिद्र अति नै हो चैत भन्छन् सबै
गर्दा काम सधैं उराठ जहिल्यै लाग्दैन जाँगर कवै ॥४

चैते घाम चरक्क चर्कन गई पोल्दो छ उस्तै उहाँ
प्राणी ती विचरा सिँयाल नमिली खोजेर हिँड्छन् जहाँ ।
सुक्छन् मूलहरू यसै वखतमा चर्को पियासै अति
यस्तै कारणले छ चैत निठुरी हेर्नोस् भएको कति ॥५

खुट्टो एक भए उही मनुज ता बन्नेछ त्यो दुर्बल
जोडामा सबथोक बन्दछ सखे प्रायः गरी अब्बल ।
चुत्था यो महिना रहेछ सबमा लेखें म यो ठान्दछु
दोटा मास मिली वसन्त गतिलो जन्म्यो भनी मान्दछु ॥ ६

*(छन्दः शार्दूलविक्रीडित)*

## सधैं माम्ती खोलो[1]

सधैं माम्ति खोलो कलकल बहन्थ्यो सुन जहाँ
तरिन्थ्यो भेलबाढी कतिकति कुनै औशरमहाँ ।
मिठो त्यो क्वैलीको कुहुकुहु अहो ! जङ्गलमहाँ
सुनी जौंजौं हुन्थ्यो सुमधुर अहो ! कण्ठ छ जहाँ ॥१

उता रोशी, कोशी पनि त गरियो सैर जलमा
निकैचोटी दङ्गा अनि त भइयो आँप फलमा ।
फिऱ्यो बुद्धी आफ्नै पछि त बुझियो व्यर्थै चिढियो
निकै जोखिम् मोली बहुतसँगले मात्र अडियो ॥२

विरोधी हुन्थैं ती अधिक चुसने दानवसँग
खुसी लाग्थ्यो केवल् असल मनका मानवसँग ।
म धेरैको प्यारो सिमितसँग आँखी हुन पुगैं
डुबेका पीडामा कति मनुजका मन् छुन पुगैं ॥३

सबै विद्या पूरा मकन बहुतै सुन्दर नर

बनूँ हर्दम साँच्चै विचर नर ऊ भन्दछ तर ।
अपूर्णै हुन्छन् ती हर चिजहरू जिन्दगी महाँ
सबै पूर्णै गर्ने जन त जगमा को छ र यहाँ ?४

*(छन्द : शिखरिणी / माम्ती खोलो : काभ्रेपलाञ्चोक र सिन्धुलीको सीमानामा परेर रोशी नदीमा मिसिने एक पहाडी खोलो)*

# थापेर झोलीहरू

कोही मागनमै सिपालु अति छौं थापेर झोलीहरू
आफ्नै भर्न भुँडी सिपालु कति छौं बेचेर खोलीहरू ।
साँच्चै साख बचाउने तिर कतै खुल्दैन बोलीहरू
स्वार्थै निम्ति खुबै मिसिन्छ जहिल्यै खोपेर लोलीहरू ॥१

कोही देश बचाउ गर्न विचरा ! निल्छन् नि गोलीहरू
दोर्जे लेण्डुपझैं बनीकन कुनै खेल्छन् नि होलीहरू ।
दासी बन्न कुनै रूचाउँछ कठै ! बोकेर डोलीहरू
मोटो दाम कमाउने नरपिचास् बेच्छन् नि चोलीहरू ॥२

*(छन्द: शार्दूलविक्रीडित/शैली : स्वतन्त्र मुक्तक)*

# कालो बजारीहरू !

भ्रष्टाचार् बहुतै चली मुलुकमा खप्नै नसक्ने भयो
घुस्खोरी दिनदिन्  नयाँ रूप गरी मौलाउँदै झन् गयो ।
रातारात धनी बने नररूपी कालोबजारीहरू
सर्मेहिन् कमिशन् लिएर जिउने चल्दै गयो रित् अरू ॥१

सोझो टिक्न कठिन् हुँदै जगतमा जाँदो छ हर्दम यहाँ
बल्दो अग्नि विषे त ताप्छ दुनियाँ ताप्दैन निभ्दोमहाँ ।
यस्तो रित् अब ता छ बन्द नभए भूकम्प जाला तब
पीडाका रहमा डुबेर रहने ती एक होलान् सब ॥२

ooo

उँभोदेखी डर्ने न त मनुज क्वै डर्दछ उँधो
सधैं आफ्नो मात्रै किन त नर ऊ गर्दछ हुँदो ।
जरो हो ती सब्को बुझ्न त खुबै मुस्किल हुने
सधैं सानो पर्ने मनुज त बडो को छ र छुने ॥३

उनी भन्थे पैल्यै मकन विधिको शासन गरूँ

सबै लाटा सोझा पिडितहरूको दुःख म हरूँ ।
अनेकौँ ती आशा अरूकन दिए गर्दछु भनी
भएनन् पूरा ती अलिकति भने मर्दछु पनि ॥४

मिठा भाषण् सुन्दै मनुज जब ताली दिन गए
मिल्यो सत्ता साँचो अलिअलि गरी दूर त भए ।
घुमी बस्ने कुर्सी जब त अधिकै अन्ध त उनी
बनेको देखेरै तब कति बने दुश्मन पनि ॥५

यही रित्ले हर्दम् विपुल समयै खेर त गयो
उसैले हाम्रो यो मुलुक अति कम्जोर हुन गयो ।
नखुल्दा यी आँखा दिनदिन मुलुक झन् तल झऱ्यो
खबर्दारी गर्दै अब त दुनियाँ बिउँझिनु पऱ्यो ॥६

भुली आफ्ना स्वार्थै अब मुलुकका खातिर पनि
अलिक् बेला केही दिन अघि सरौं मानव बनी ।
बित्यो बेला लामो विषय रसमा बेस्कन उसै
बिचारी बाँकी काल् अब त नचुकौँ लौ नर कसै ॥७

*(छन्द : पहिलो- शार्दूलविक्रीडित, दोस्रो- शिखरिणी)*

# प्यारा बुद्ध

प्यारा बुद्ध तिमी कतातिर गयौ नेपाल छोडीकन
क्वैली डाक्न भुली वियोग नसही भन्दो छ मेरो मन ।
डेरा मात्र सऱ्यौ कि वा घर समेत् त्यागेर अन्तै गयौ
आफ्नै देश महाँ अशान्ति रहँदा आफैँ बिराना भयौ ॥१

सम्झी देश छिटै फिरेर जनमा लौ शान्ति छर्ने गर
त्यस्तो कर्म यहाँ भएन त भने मर्नेछ सोझो नर ।
जोडी हात प्रणाम गर्छु मनमा राखेर तिम्रो रूप
नेपालीजनका फिरून् मतिहरू फर्केर आउन् सुख ॥२

*(छन्द : शार्दूलविक्रीडित)*

## आभार

### पत्रिकातर्फ

अन्नपूर्ण पोस्ट, तिर साप्ताहिक, रोशी साप्ताहिक, नेपालभूमि साप्ताहिक, चेष्टा साप्ताहिक ।

### अनलाइनतर्फ

जीवनशैली डटकम, फ्रेसन्युज नेपाल, मिडियादर्पण ।

### व्यक्तितर्फ

लक्ष्मी दाहाल, निर्भीकजङ्ग, अक्रिन अधिकारी, विष्णुकुमार पौडेल, नवराज लम्साल, रायमाझी परिवार काभ्रेपलाञ्चोक ।

# आफ्नो भन्नु

अघिल्ला दुई गजलसंग्रह ('झण्डा झुक्नु हुँदैन' र 'मुरहरि रायमाझीका गजलहरू') पाठकहरूले मन पराइदिनुभएकाले डायरीमा सीमित रहेका अक्षरहरूले तेस्रो पुस्तकको रूप लिन पाए । गजलसँगै छन्दका कविताहरू पनि मेरो रूचीको विषय भएकाले अहिले पुस्तकको रूपमा 'शासन खै विधिको ?' आइपुगेको छ । यहाँ समाविष्ट २६ थान कविताहरूमा मैले बोध गरेको समाज, देश, प्रकृति, संस्कृति र प्राकृतिक सौन्दर्य उजागर गर्ने प्रयास गरेको छु । त्यस्तै हामीले नै सृजना गरेका विकृति र विसङ्गति समाजबाट मुक्त हुनुपर्दछ भन्नेतर्फ पनि संकेत गरेको छु । युगीन चेतनाद्वारा निर्देश भई आफ्नो सत्त्वमा उभिन सके हामी नेपाली सक्षम हुन्छौं भन्ने मेरो दृढ विश्वास छ । सरल, सहज र सम्प्रेष्य कवितामा मेरो विश्वास भएकाले कहीँ-कतै हलन्तको अधिक प्रयोग गरिए पनि सबै प्रकारका पाठकको लागि सहज हुने भएकाले त्यसो गरिएको हो । यसमा विद्वत्जनले अन्यथा लिनुहुने छैन भन्ने मेरो विश्वास छ ।
पुस्तक प्रकाशन गरिदिने प्रकाशक इन्डिगो इन्कलाई धन्यवाद !

१७ जेठ २०७९, बनेपा

*murahariraya@gmail.com*

मेरो सच्चा सुख छ दिनहूँ क्यै नयाँ सृजनामा
आफैंलाई पनि सृजनको सोखमा बिर्सनामा ।
आफ्नै छातीमनि स्वरसको मूल भेट्दैन जस्ले
तिर्खा कैल्यै पनि हृदयको हेर मेट्दैन त्यस्ले ॥

*(माधवप्रसाद घिमिरे/कालीगण्डकी)*

॥अस्तु॥